# श्रीखण्डपुरको लुकेको कवि कालुमान सिं

बद्रीलाल श्रेष्ठ

श्रीखण्डपुरका साहित्यकार कविको बारे खोज गर्ने क्रममा श्रीखण्डपुरवासीलाई थाहै नभएका कवि लुकेर बस्नु भएको रहेछ । नाम चलेको तर हामीले नचिनेको थाहा नभएको कवि हुनुहुन्छ श्री कालुमान सिं श्रेष्ठ । वहाँ नेपालमा नै नाम चलेका नेवारी भाषाका कवि हुनुहुन्छ । उहाँको जन्म ने.सं. ९७१ मा श्रीखण्डपुरमा भएको थियो । खरपुर श्रीखण्डपुर (खड्पु) मा वस्न बाँच्न कठिनाई हुँदै गयो । आम्दानीको काम नभएको कारण साहुसंग ऋण लिएर काम चलाउँदै गर्दा साहुको ऋण बढ्दै गएको कारण बुवा आमा दुवै कामको लागि काठमाडौंमा जानुभयो । दुवैले मेहनत गरी काम गर्दै जाँदा अलि अलि रकम जम्मा गर्नुभएपछि भ्फोछे लायकुमा एउटा पुरानो घर किन्नुभयो । कवि कालमान २२ वर्षको उमेर हुँदा उहाँको बुवाले घर किन्नु भएको थियो । आर्थिक उन्नतिको लागि कविले पनि सराफी पसल राख्नुभयो । यसरी घरको भाडा तिर्न नपर्ने बुबा र उहाँको आयवाट आम्दानी बढ्दै गयो र उहाँहरुको जीवन सुखमय हुँदै उहाँको बुबाले लुगा सिउन ज्याला गरि खन्ने, धान कुट्ने मिल आफैले किन्नु भयो र आफै मिल चलाउनुभयो । भय यसरी उहाँहरुको जीवन सुखमय हुँदै गयो । कविले पनि गरगहना लिई रुपैया व्याज दिने काम गर्न भयो यसरी उहाँको आर्थिक अवस्था राम्रो हुँदै गएको अवस्थामा पहिले उहाँको बुवा वित्नुभयो र त्यसको ३ वर्षपछि उहाँको आमा पनि वित्नु भयो । उहाँको बुवा आमा दुवै वित्नु भएपछि उहाँ विरक्त भै विहान बेलुका भजन मण्डलमा जानु भै मन बहलाउनु हुन्थ्यो त्यत्ति खेर नै उहाँले फुल सम्बन्धि कविता लेख्नुभएको अनुमान गर्न सकिन्छ । उहाँले लेख्नु भएको कविता अप्रकाशित छन्। उहाँको कवितालाई प्रकाशनमा ल्याउ खोजको विषय बनाउनुपर्ने हुन्छ । कवि कालुमान सिं को कविता रचनाकाल ने.सं. १०१० देखि ने.सं. १०२० सम्म रच्नु भएको देखिन्छ।

उहाँको रचनाहरु नेवारी भाषामा भएको र राणाकालको निरंकुशताको कारण प्रकाशित गर्न सकिएको थिएन । राणाकालमा पनि उहाँले कविता रच्न आँट गर्नलाई गर्भको साथ उहाँ साहसिलो कवि हुनु हुन्छ भन्न सकिन्छ । उहाँका साहसलाई श्रीखण्डपुरवासीले सम्मान गर्नुपर्छ।

उहाँले गद्यगुरु निष्ठानन्द बज्राचार्यज्यूको घर ओमबहालमा भएकोले उहाँको र निष्ठानन्द बज्राचार्यको भेट भईरहन्थ्यो । बज्राचार्य कथा भन्न टोलटोलमा जान हुने भएकोले उहाँहरुको सम्बन्ध रहेको अनुमान गर्न सकिन्छ । उहाँले रच्नु भएको कविताको हरफलमा महाकवि सिद्धिदासको बारे कविता लेख्नु भएको छ । यसबाट उहाँको सम्बन्ध कवि सिद्धिदास संग रहेको देखिन्छ । कविहरुलाई समाजले राम्रो दृष्टिले हेर्ने गर्दैनन् । कसैले कविता बेचि खाने माग्ने रुपले पनि घृणा गरेको पाइन्छ । यसलाई समाजले चिन्न सक्नुपर्छ र कविको सम्मान गर्ने वानीको विकास गर्नुपर्छ। कविता पाठ गरी रहने आफ्नो कविता सुनाउने क्रममा कसैले उहाँ बहुला नभएपनि बहुला भन्दा पनि पर्वाह नगरि आफ्नो अन्य आर्जन गरि रहेको समयमा नै आफ्नो श्रीमती थुलिनानीको काखमा आफ्नो एक्लो छोरा चन्द्रलाललाई छोडी ने.सं. १०३९ मा देह त्याग गर्नुभयो । उहाँले ने.सं. ११२० सम्ममा ३२ कविता लेखिसक्नु भएको थियो । यसमध्ये 'सिन्ध्स्वो', 'मुखुस्वाँ', सि स्वो' र 'जी स्वाँ', 'कुमारी' ने.सं. १०२० मा प्रकासित भइसकेकोले हाल उहाँले रच्नु भएको कविता संग्रहको रुपमा कुमारी प्रकाशनले प्रकाशित गर्नलागेको छ। उहाँको बारे खोज गर्न सम्पूर्ण श्रीखण्डपुरलाई अनुरोध गर्दछु। यो लेख साहित्यिक मासिक 'जनमत' वर्ष १८ अंक ७८ साहित्यिक अंक ७९, २०५८ भाद्रमा कवि कालुमानलाई माया गर्नू हुने श्री बद्री लाल श्रेष्ठ ज्यूले लेख्नु भएको लेखको आधारमा तयार गरिएको छ। लेखक श्री बद्री लाल श्रेष्ठ ज्यू र जनमत प्रकाशनलाई म